# डार्विनको विकासवाद नास्तिक सिद्धांत हो..!




**ओ३म्..**

डार्विनको सिद्धान्तमा केहि प्रश्नोत्तर :-

सिद्धान्तिः आरम्भमा के थियो?
विकासवादीः आरम्भमा केवल परमाणु आदि थिए, जुन समुद्र तलमा संयोगवश जोडीए रससाना कोशिका (अमीबा) को निर्माण गरे, जुन चेतन (कनसियस ) थिए।
सिद्धान्तिः परमाणु जड हुन् या चेतन (जसमा बुद्धि, सुख, दुःख, राग, द्वेष तथा इच्छादि गुणहरु हुन्छन् त्यो चेतन हुन्छ जसमा यी हुँदैनन्, त्यो जड)?
विकासवादीः परमाणु जड हुन्।
सिद्धान्तिः यदि परमाणु जड हुन् भने त्यसैको संयोगले बनेका वस्तुमा चेतनता कहाँबाट आयो? जस्तो गुणधर्म जड वस्तु (कारण द्रव्य) को हुन्छ, त्यस्तै गुणधर्म अमीबा (कार्य द्रव्य) मा हुनु पर्ने। जस्तै- घैटो माटोबाट बन्दछ र माटो (सिलिका) का एक-एक परमाणु संग मिलेर बन्दछ, परमाणु जड, माटो जड र घैटो पनि जड छ, यसैगरि कुनै फूल अथवा फललाई ससाना टुक्रामा विभाजन गर्नेहो भने पनि प्रत्येक टुक्रामा त्यस्तै गुणधर्म हुनेछन् जस्ता फूल या फलमा थिए आदि।
प्रश्न पुनः राख्छुः अमीबामा चेतनता कहाँबाट आयो?
विकासवादीः थाह छैन। शायद प्राकृतिक परिवेश बाट।
सिद्धान्तिः प्राकृतिक परिवेश, जल, समुद्रको माटो, लवण, जलवायु तथा अन्य कारक हुन् यी सबै पनि परमाणु संग मिलेर बनेका छन्। परमाणु जड हो।

प्रश्न पुनः राख्दैछुः अमीबामा चेतनता कहाँबाट आयो? जीवात्मा र परमात्मालाई त तपाइँ मान्नुहुन्न।
विकासवादीः थाहा छैन।
सिद्धान्तिः ल तपाइँको सिद्धान्त त प्रथम कडीमा नै खण्डित भयो। किनकि कारण बिना कहिल्यै कार्य हुँदैन, जब कारण नै जड छ भने त कार्य पनि जफ नै होला। जब तपाइँ संग उत्तर नै छैन भने यस्तो महानास्तिकतामा आधारित विचारधारा तपाइँले किन उपस्थित गर्नुभो? र मानिस हरुलाई नास्तिकताको महाअन्धकारमय मार्ग तिर किन धकेल्दै हुनुहुन्छ?
सिद्धान्तिः त्यस पछी के भयो?
विकासवादीः त्यस पछी उक्त कोशिकामा विभाजन हुन थाल्यो अर्थात बहुरूप भयो र माछा आदि प्राणि बने।
सिद्धान्तिः कोशिका बहुरूप भएर माछा बन्दा सम्मको प्रक्रियाका लागि को जिम्मेदार छ?
विकासवादीः प्राकृतिक कारक।
सिद्धान्तिः प्रकृति जड हो भन्ने कुरो पहिले नै सिद्ध गरियो, त्यसमा बुद्धि हुँदैन।फेरी को जिम्मेदार छ?
विकासवादीः अमीबा।
सिद्धान्तिः अमीबा अधिक बुद्धिमान छ अथवा तपाइँ?
विकासवादीः हामी।
सिद्धान्तिः जब तुच्छ बुद्धि भएको अमीबाले आफ्नो इच्छाले बहुरूप भएर माछा जस्तो रचना बुद्धिपूर्वक बनाउन सक्छ भने तपाइँ त परिपक्क बुद्धि भएको मानिस, के तपाइँ स्वयंले प्वाँखको इच्छा गरेर आफ्नो शरीरमा पखेटा बनाएर देखाउन सक्नुहुन्छ?
सिद्धान्तिः फेरी के भयो?
विकासवादीः फेरी माछा आदि जिवहरु आफ्नो शरीर देखि केहि संतुष्ट थिएनन् र ति प्राकृतिक परिवेशबाट प्रभावित हुँदा-हुँदा करोडौं वर्षमा कछुवा आदि बने।
सिद्धान्तिः ओहो..! कस्तो अचम्म..! माछा र कछुवाको शरीरमा आकास-पातालको अन्तर छ, र फेरी माछाहरु आज पनि छन् र कछुवा पनि।तपाइँ यो त भन्नुस् जीवहरुको शरीर बुद्धिपूर्वक बनेका छन् कि छैनन्?
विकासवादीः अँ हो, त्यो त छ।
सिद्धान्तिः भन्नुस् त यो बुद्धि कस्तो हो? ईश्वर त तपाइले मान्नु नै हुन्न। प्राकृतिक भनेर नभन्नु होला किनकि त्यो जड छ। माछामा यस्तो बुद्धि छैन जो आफ्नो बुद्धिले कछुवा बन्न सकोस्।र फेरी माछालाई आफ्नो शरीर संग के आपत्ति थियो र ऊ कछुवा बन्न चाहन्थ्यो? माछा केवल जलमा सास लिन सक्छ र कछुवा जल र थल दुवैमा। अब भन्नुस यो सामर्थ्य कहाँबाट विकसित भयो??
विकासवादीः अहँ, थाहा भएन।
सिद्धान्तिः त्यसो भए तपाइँलाई यस्तो मिथ्या कल्पना गर्दा लाज आएन? त्यस पछि के भयो?

विकासवादीः फेरी कछुवाहरु जलबाट जमीन तिर आउन थाले र सरीसृप आदि विकसित भए।
सिद्धान्तिः वाह-वाह..! पहिलेका प्रश्नहरुको उत्तर त भएन तपाइँ संग अझैं तपाइँले गफ लगाउँदै हुनुहुन्छ। यो कुरो त "कहींको ईट कहींको रोडी, भानुमतिले लगन जोडी" भनेझैं पो भयो त।
विकासवादीः अँ, यही सिद्धांत न्यायोचित छ किनकि यी सबलाई बनाउनेवाला कुनै ईश्वर आदि हैन।
सिद्धान्तिः कुनै बुद्धिमानले नबनाएर केहि बन्न सक्ला र ? "तपाईको घरमा भएका सबै वस्तुहरु स्वयं बनेका हुन्" भनेर कसैले तपाई संग भन्यो भने मान्नुहुन्छ?
विकासवादीः अहँ, मान्न सक्दैन।
सिद्धान्तिः त्यसो भए यो सृष्टि, सूर्य, चन्द्रादि कुनै बुद्धिमानले नबनाएर कसरि बने त?? परमाणु (कारण) जड हो, त्यसमा वुद्धि छैन, हामी (जीवात्मा) ले यत्रो भयङ्कर जटिल सृष्टि आदि बनाउन सक्दैनौं र ईश्वर तपाइँ मान्नुहुन्न भने भन्नुस न त यी सब कसरि बने? सूर्य र पृथ्वी दुवै जड वस्तु हुन् जसमा वुद्धि छैन, के तिनले "म (पृथ्वी) तिमि (सूर्य) देखि यति प्रकाशवर्ष टाढा हुन्छु र यो-यो दिशामा यति-यति गतिमा घुम्छु" भनेर स्वयं नै निर्णय गरे ?? के तपाईलाई सृष्टि तथा शरीरादि रचनामा कुनै तीक्ष्ण बुद्धि र जटिल व्यवस्था देखाई दिन्न??
विकासवादीः अँ, देखिन्छ।
सिद्धान्तिः त्यसो भए आँफै बने भनेर किन मान्नुहुन्छ? सृष्टिलाई देखर स्रष्टाको, नियमलाई देखर नियन्ताको, व्यवस्थालाई देखर व्यवस्थापकको, बुद्धिलाई देखर बुद्धिमानको अनुमान हुँदैन??
सिद्धान्तिः सर्पका खुट्टा कसरि लुप्त भए?
विकासवादीः सर्पले खुट्टाको प्रयोग गर्न बन्द गरेको थियो त्यसैले लुप्त भए। जुन अङ्गहरु अधिक उपयोगमा आउँछन्, ति अधिक विकसित र कम उपयोगमा आउने कम या लुप्त हुन्छन्।
सिद्धान्तिः खुट्टा लुप्त हुनु भन्दा पहिले सर्प कसरि हिड्थ्यो?
विकासवादीः खुट्टाले।
सिद्धान्तिः त्यसो भए सर्पले आफ्नै खुट्टाको उपयोग लिन किन बन्द गरे होला? अर्थात हिड्न किन बन्द गर्यो? सर्प के एकै स्थानमा थुप्रीरहन्थ्यो? त्यसो भए त भोजन नपाएर भोकले मर्ने थिएन र?
विकासवादीः थाहा छैन।
सिद्धान्तिः मनुष्य कसरि बन्यो त?
विकासवादीः बाँदर बाट।
सिद्धान्तिः बाँदर र मनुष्यमा पनि भारी अन्तर छ। शारीरिक रचनाका साथ साथ मन, बुद्धि, वाणी आदिको पनि अभाव छ। भन्नुस त, बाँदर जो रुख-वृक्ष, तथा ढिक-काल्नामा उफ्रिने-कुद्ने गर्दछन्, तिनमा बुद्धि तथा वाणी आदि कसरि विकसित भयो? को जिम्मेवार छ? र त्यसको पुच्छर नै लुप्त किन भयो?
विकासवादीः प्रकृतिलाई देखि-देखि बुद्धि तथा वाणी विकसित भयो।
सिद्धान्तिः वाह..! आज पनि धरतीमा अनेकौं त्यस्ता मनुष्य जाति रहन्छन्, जो मनुष्य त हुन् तर

नपढेर उनको बुद्धि आउँदैन। तिनीहरु प्रकृतिलाई देखेर बुद्धिमान किन हुँदैनन्? हजारौं वर्ष देखि मुर्ख नै किन छन्? फेरी बाँदर बाट मनुष्य बनेर बुद्धिमान हुने कुरो मान्नु त "मैले मनुष्यका सिङ बाट बनेका आभूषण किनेको छु" भने जस्तै हो।

सिद्धान्तिः सुन भाई, ज्ञान नैमित्तिक हुन्छ; स्वाभाविक हैन।

विकासवादीः कसरि? कृपया सम्झाउनुस त।

सिद्धान्तिः यसका लागि एउटा दृष्टांत सम्झनु पर्छ- मानौं, कुनै वालक जो भर्खर जन्मेको छ। उसकी आमाले उसको रेख-देख आदि गरोस्, स्तनपान गराओस्, सरसफाई आदि पनि गरोस् तर शिशुका साथ् सम्वात, कुराकानी या अन्य त्यस्तो कुनै व्यवहार नगरोस् जसबाट उक्त शिशुले केहि सिक्न सकोस र न उसलाई कुनै शिक्षादि पनि देओस। जब यस्तो वातावरणमा शिशु हुर्कन थाल्छ, ऊ न केहि बोल्न तथा बुझ्न सक्छ, न सिक्न पाउँछ अर्थात त्यो मन्दबुद्धि कै रहनेछ। त्यसले जतिसुकै प्राकृतिक वस्तु तथा घटनाहरुलाई किन नदेखोस्, स्वमेव ज्ञानी हुन सक्दैन।

संसारमा यस्ता अनेकौं उदाहरणहरु पाइन्छन्। यस्तै एकपटक दुई जना शिशु एउटा जङ्गली कुकुर (स्याल) को खोरमा पाइएका थिए, ति दुवै जना हात-खुट्टा टेकेर हिड्ने गर्दथे, स्यालकै जस्तो व्यवहार गर्दथे र आवाज पनि स्यालकै जस्तो निकाल्ने गर्दथे, मानिसहरु देखि डराएर टाढा भाग्ने गर्दथे। निक्कै कठिनताका साथ् तिनलाई त्यहाँ बाट ल्याएर सामाजिक शिक्षा दिइयो र लुगा लगाउन सिकाइयो. पछी छिट्टै तिनीहरुको मृत्यु पनि भयो। (https://en.wikipedia.org/wiki/Feral_child)

यस प्रकार ज्ञान नैमित्तिक हुन्छ अर्थात कसै द्वारा दिनु आवश्यक छ, यदि दिईएन भने स्वमेव हुँदैन।

सिद्धान्तिः अब भन्नुस, तपाइँका पूर्वज बाँदरलाई ज्ञान कसले दियो र उनको वाणी कहाँबाट आयो? तथा मनुष्य मै आएर तपाइँको क्रमिक विकासको सिद्धान्त किन रोकियो?

विकासवादीः रोकिएको छैन हजुर, बौद्धिक विकास आज पनि चल्दैछ। मानिसहरु बढी बुद्धिमान हुँदै गइरहेका छन्।

सिद्धान्तिः अरे वाह..! मनुष्य भन्दा पहिले सम्म त शारीरिक विकास भइरह्यो र मनुष्यमा आएर शारीरिक विकास रोकियो र बौद्धिक विकास शुरू भयो??? तपाइँको सिद्धान्तमा यो मोड कसरि आयो? को जिम्मेवार छ? प्रकृति जड हो, वुद्धि छैन, त्यो जिम्मेवार छैन। ईश्वर तपाइँ मान्नु नै हुन्न र बाँकी रहनुभयो तपाइँ। यदि तपाइँ जिम्मेवार हुनुहुन्छ भने आफ्नो शरीरमा विकासलाई पुनः लागु गरेर पखेटा उमारेर देखाउनुहोस् न।

तपाइँको सिद्धान्त पाइला-पाइलामा मिथ्या साबित हुन्छ, यस्ता अनगिन्ति प्रश्नहरु छन् जसमा निरुत्तर रहनुको सिवाय तपाइँ केहि पनि बोल्न सक्नुहुने छैन अथवा भद्दा टुक्का जोड्ने या थोत्रा कल्पनाहरुको सहारा नै लिनुहुनेछ।

जुन जिव आज जस्तो छ, सृष्टिको आरम्भमा पनि यस्तै थियो र अन्त सम्म यस्तै रहनेछ। कुकुर बाट कुकुर, घोडा बाट घोडा, बाँदर बाट बाँदर, मनुष्य बाट मनुष्य, गहुँ र जौ बाट गहुँ र जौको फसल आदि पैदा हुन्छन्। सृष्टिको आरम्भ देखि यस्तै चलिरहेको छ र महाप्रलय पर्यन्त यस्तै चल्नेछ।

आज अधिकांश वैज्ञानिकहरुले डार्विनको मतलाई पुर्ण रुपमा नकारी सकेका छन् तर तिनीहरु संग हाल सम्म पनि यस्तो कुनै संतोषजनक सिद्धांत छैन जसलाई डार्विनको उत्तरमा पेश गर्न सकुन अर्थात डार्विनको सिद्धान्तलाई हटाएर त्यसलाई स्थापित गर्न सकुन। त्यसैले हाल यही चल्न दिऔं भन्ने निस्कर्षमा छन्।

अधिक जानकारीका लागि महर्षि दयानन्द सरस्वति कृत सत्यार्थ प्रकाश अवश्य पढौं..!

अस्तु..

नमस्ते..!

(हार्दिक आभारः पवन कुमार)